# चिट्ठा ऐन, २०२५

लालमोहर र प्रकाशन मिति

२०२५।७।९

## २०२५ सालको ऐन नं. २२

## चिट्ठा नियन्त्रण गर्ने व्यवस्थाको निमित्त बनेको ऐन

प्रस्तावना : सर्वसाधारण जनताको सदाचार तथा आर्थिक हित कायम राख्न चिट्ठाको बिक्री वितरण र सञ्चालनमा नियन्त्रण गर्नु वाञ्छनीय भएकोले,

श्री ५ महाराजाधिराज महेन्द्र वीर विक्रम शाहदेवबाट राष्ट्रिय पञ्चायतको सल्लाह र सम्मतिले यो ऐन बनाइबक्सेकोछ ।

१. **संक्षिप्त नाम, विस्तार र प्रारम्भ** : (१)यस ऐनको नाम "चिट्ठा ऐन, २०२५" रहेकोछ ।

(२) यो ऐन नेपालभर लागू हुनेछ ।

(३) यो ऐन तुरुन्त प्रारम्भ हुनेछ ।

२. **चिट्ठा बिक्री, वितरण गर्न र खोल्न नपाउने** : यो ऐनको दफा ३ मा व्यवस्था गरिए बमोजिम नेपाल सरकारले अनुमति दिएकोमा बाहेक कसैले देहायका कुनै काम गर्न वा गराउन पाउने छैन :-

(क) कुनै चिट्ठा खोल्ने, छाप्ने वा प्रकाशित गर्ने, वा

(ख) कुनै चिट्ठा बिक्री वितरण गर्ने वा बिक्री वितरण वा विज्ञापनको लागि दिने, वा

(ग) कुनै चिट्ठा सम्बन्धी विज्ञापन छाप्ने, प्रकाशित वा बिक्री वितरण गर्ने वा सो कामको लागि आफू साथ राख्ने, वा

(घ) नेपाल सरकारले तोकी छुट दिएकोमा बाहेक विदेशी मुलुकबाट कुनै चिट्ठा वा त्यस्तो विज्ञापन नेपाल अधिराज्यभित्र बिक्री वितरणको लागि ल्याउने वा झिकाउने वा बिक्री वितरण गर्ने वा त्यसरी ल्याई बिक्री वितरण भएको चिट्ठाबाट प्राप्त भएको आम्दानी वा त्यस्तो चिट्ठाको बिक्री वितरण सम्बन्धी कुनै लगत नेपाल अधिराज्य बाहिर पठाउने, वा

(ङ) चिट्ठा सम्बन्धी काम गर्नको लागि कुनै घर जग्गा प्रयोग गर्ने वा प्रयोग गर्न दिने ।

३. **नेपाल सरकारको स्वीकृति लिएर चिट्ठा खोल्ने** : (१) कुनै व्यक्ति वा संस्थाले चिट्ठा खोल्न चाहेमा खोल्न चाहेको चिट्ठाको पूर्ण विवरण सहितको लिखित निवेदन नेपाल सरकार समक्ष दिएमा र नेपाल सरकारले सो काम मनासिब ठहऱ्याएमा अनुमति दिन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम चिट्ठा खोल्न अनुमति प्राप्त गर्ने व्यक्ति वा संस्थाले देहायमा लेखिएको शर्त बन्देजको अधीनमा रही चिट्ठाको विक्री वितरण र सञ्चालन गर्न समेत सक्नेछ :-

(क) कुनै परोपकारी वा सार्वजनिक हित सम्बन्धी कार्यको सहायतार्थ चिट्ठा खोल्दा संस्थाले मात्र खोल्न पाउनेछ र त्यसरी चिट्ठा खोल्दा चिट्ठा बिक्री भई प्राप्त भएको कूल रकम मध्येबाट ६० प्रतिशत पुरस्कार बाँडिनेछ । यस पछि बाँकी हुन आएको रकमलाई सम्बन्धित संस्थाले परोपकारी सार्वजनिक हित सम्बन्धी र चिट्ठा सञ्चालन सम्बन्धी काममा लगाउन सक्नेछ ।

(ख) परोपकारी वा सार्वजनिक हित सम्बन्धी कार्यको सहायतार्थ खोलिएकोमा बाहेक अरु चिट्ठाको पुरस्कार नगदीमा हुने छैन र चिट्ठा खोल्दा चिट्ठा बिक्री भै प्राप्त भएको कूल रकम मध्येबाट ७५ प्रतिशत मूल्य बराबरको जिन्सी सामान पुरस्कार स्वरुप वितरण गरिनेछ । यस पछि बाँकी हुन आएको रकमलाई सम्बन्धित चिट्ठा सञ्चालन गर्ने व्यक्ति वा संस्थाले मुनाफास्वरुप र चिट्ठा सञ्चालन सम्बन्धी कामको लागि लिन सक्नेछ ।

(ग) सबै चिट्ठाको प्रतिमा निम्नलिखित कुराहरु खोलिएको हुनुपर्छ :-

१. चिट्ठाको मूल्य,

२. पुरस्कारको विवरण,

३. चिट्ठा खोलिने स्थान,

४. चिट्ठा बिक्री वितरण र सञ्चालन गर्ने संस्थाको नाम,

५. चिट्ठाको क्रम संख्या,

६. चिट्ठा खुल्ने र बन्द हुने मिति, र

७. नेपाल सरकार वा अधिकार प्राप्त अधिकारीबाट चिट्ठा खुल्ने अनुमति प्राप्त भएको मिति ।

(घ) कुनै सार्वजनिक प्रर्दशनी स्थल वा क्लव वा सोसाइटी जस्तो ठाउँमा खोल्न वा सञ्चालन गर्न अनुमति पाएमा त्यस्तो ठाउँमा बाहेक अन्यत्र चिट्ठाको बिक्री वितरण गर्न र सञ्चालन गर्न पाइने छैन ।

(ङ) प्रत्येक चिट्ठाको मूल्य बराबर हुनु पर्छ ।

(च) चिट्ठाको पूरा मूल्य भुक्तान नभई चिट्ठा बिक्री गर्न पाउने छैन ।

(छ) एक पटक बिक्री भइसकेको चिट्ठा फिर्ता हुने छैन ।

(ज) यो ऐन अन्तर्गत बनेका नियममा तोकिएको कार्यविधि अपनाउनु पर्नेछ ।

(३) चिट्ठाको बढी से बढी कूल पूँजी तोक्ने र प्रत्येक चिट्ठाको मूल्य निर्धारण गर्ने हकमा नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी आदेश निकाल्न सक्नेछ ।

४. **पुरस्कारमा हेरफेर गर्न हुने** : चिट्ठा बन्द हुने मितिसम्ममा चिट्ठामा तोकिएको कूल पूँजी बमोजिम सबै चिट्ठा बिक्री हुन नसकेमा सम्बन्धित व्यक्ति वा संस्थाले बिक्री भए जति चिट्ठाको दामासाहीले पुरस्कारमा हेरफेर गर्न सक्नेछ ।

५. **गिरफतार गर्ने र खानतलासी लिने अधिकार** : कसैले यो ऐनको बर्खिलाप काम कारवाही गरेको वा गराएको वा सो काम गर्न दुरुत्साहन दिएकोछ भन्ने मुनासिव माफिकको कारण देखेमा वा पत्ता लागेमा नायब निरीक्षक वा सो भन्दा माथिल्लो दर्जाको प्रहरी अधिकृतबाट अधिकार पाएको प्रहरी कर्मचारीले सम्बन्धित व्यक्तिलाई गिरफतार गर्न घरजग्गामा प्रवेश गरी खानतलासी लिन र कसूर सम्बन्धी वस्तुहरु कब्जामा लिन सक्नेछ ।

६. **अधिकार प्रत्यायोजन गर्ने** : नेपाल सरकारले दफा ३ बमोजिम आफूमा निहित रहेको अधिकार नेपाल राजपत्रमा प्रकाशित आदेशद्वारा सोही आदेशमा तोकिएको अधिकृतले प्रयोग गर्न पाउने गरी सुम्पन सक्नेछ ।

७. **दण्ड सजाय** : कसैले यो ऐन बर्खिलाप कुनै काम गरेमा निजलाई बिगो जफत भई बिगो बमोजिम जरिवाना वा ६ महीनासम्म कैद वा दुवै सजाय हुनेछ ।

८. **नियमहरु बनाउने अधिकार** : यो ऐनको उद्देश्य कार्यान्वित गर्न नेपाल सरकारले नियमहरु बनाउन सक्नेछ ।

९. **यो ऐन बमोजिम हुने** : यो ऐन र यस ऐन अन्तर्गत बनेको नियममा लेखिएको कुरामा सोही बमोजिम र अरुमा प्रचलित नेपाल कानून बमोजिम हुनेछ ।

१०. **खारेजी** : परोपकार संस्थालाई चिट्ठा खोल्न दिने सम्बन्धमा २००९ साल चैत्र ६ गते रोज ५ मा भएको लालमोहर खारेज गरिएको छ ।

---

**द्रष्टव्य** :

१. प्रहरी (पहिलो संशोधन) ऐन, २०२९ द्वारा रुपान्तर गरिएका शब्दहरु :-
“सब इन्सपेक्टर” को सट्टा “नायव निरीक्षक” ।

२. केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६३ ले देहायको शब्दको सट्टा देहायको शब्द राखी रुपान्तरण गरेको छ :
”श्री ५ को सरकार” भन्ने शब्दको सट्टा “नेपाल सरकार” ।